# नेपाल वैदिककालदेखिकै सार्वभौमसत्तासम्पन्न देश

स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न देश (भू–राजनीतिक–वैधानिक राज्य) को हैसियतमा नेपालको अस्तित्व अत्यन्त प्राचीन कालदेखि रहिआएको छ । वर्तमानमा विश्वमा रहेका स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न देशहरूमध्ये नेपाल सबैभन्दा प्राचीन हो भन्दा पनि अत्युक्ति हुँदैन । हाम्रा छिमेकी चीन र इण्डिया दुवैको इतिहासलाई हेर्ने हो भने भू–राजनीतिक–वैधानिक राज्यका हैसियतमा नेपालभन्दा निकै कनिष्ठ हुन् ।

प्राचीनकालमा नेपाल देशको विस्तृति कामरूप–कामाक्षा (वर्तमान नेपालको पूर्वी सीमानाभन्दा धेरै पूर्व) देखि कश्मीर (वर्तमान नेपालको पश्चिमी सीमानाभन्दा धेरै पश्चिम) सम्म, मानसरोवर भन्दा पनि उत्तर (वर्तमान नेपालको उत्तरी सीमानाभन्दा धेरै उत्तर) देखि गङ्गा नदीको दक्षिण (वर्तमान नेपालको दक्षिणी सीमाना भन्दा धेरै दक्षिण) सम्म थियो । कहिलेकाहिँ नेपालको सार्वभौमसत्तापूर्ण शासन अन्तर्गत रहने भूखण्ड निकै साँगुरिएको अवस्था पनि नआएको होइन । जे भए तापनि, स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न देश (भू–राजनीतिक–वैधानिक राज्य) को हैसियतमा हाम्रो देशको अविच्छिन्न अस्तित्व वैदिककालदेखि नै रहिआएको छ ।

नेपाललाई हिमवत्खण्ड, भरतखण्ड, भारतवर्ष आदि नामले पनि जनाइन्छ । नेपाल नामले विशेष सांस्कृतिक भूखण्डका साथै स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न देश अर्थात् भू–राजनीतिक–वैधानिक राज्यलाई समेत जनाइएको हो । हिमवत्खण्ड, भरतखण्ड, भारतवर्ष आदि संज्ञाहरूलेचाहिँ एक विशिष्ट सांस्कृतिक भूखण्डका रूपमा यस देशको परिचयलाई प्रकट गर्छन् ।

प्राचीनकालमा जरो भएका भारत, भरतखण्ड तथा भारतवर्ष जस्ता संज्ञा र वर्तमान कालमा इण्डिया, भारत, हिन्दुस्तान, हिन्द आदि नामले समेत चिनिने हाम्रो छिमेकी देशको संज्ञाबीचमा भ्रमित नहोऔँ । वास्तवमा प्राचीनकालमा भारत, भारतवर्ष, भरतखण्ड आदि संज्ञाले कुनै भू–राजनीतिक–वैधानिक राज्यलाई जनाउँदैनथ्यो, त्यो त सांस्कृतिक भू–खण्डलाई जनाउने संज्ञा थियो

। प्राचीनकालका भू–राजनीतिक–वैधानिक राज्यहरू त नेपाल, आन्ध्र, अङ्ग, अवन्ति, भद्राश्व, द्रविड, कलिङ्ग, कोशल, गान्धार, मगध, मालव, ओड्र, पाञ्चाल, बङ्ग, बाह्लिक, सिन्धु, त्रिविष्टप, महाराष्ट्र आदि आदि थिए । तसर्थ वर्तमान नेपाललाई हिमवत्खण्ड, भरतखण्ड, भारतवर्ष आदि नामले पनि पुकार्नु स्वाभाविक हो । सन् १९४७ मा ब्रिटिश आधिपत्यबाट स्वतन्त्र भएको एउटा देशले आफ्नो नाम इण्डिया र भारत पनि राखिदिनाले इतिहास नै भ्रमपूर्ण हुने परिस्थिति आएको हो । यदि हाम्रो छिमेकी देशले "इण्डिया भनेकै भारत" भनेर इतिहासमाथि डकैती नगरेको भए परिस्थिति अर्कै हुने थियो । जे होस्, हामीले बुझ्नै पर्ने ऐतिहासिक तथ्य के हो भने जुन व्यक्तिको नामबाट एक विशाल सांस्कृतिक भू–खण्डलाई भरतखण्ड, भारत, भारतवर्ष भनियो, ती प्रतापी व्यक्ति स्वयंको थातथलो गण्डकी प्रश्रवण क्षेत्र ( वर्तमान नेपालका गण्डकी र धौलागिरी अञ्चल) नै हो ।

डा. निर्मलमणि अधिकारी

vedicbrahman@gmail.com